# संयोजकको दुई शब्द



इतिहासविद् भूवनलाल प्रधान मेरा मार्गदर्शक गुरू हुन् । संधैभैं म अस्पष्ट ऐतिहासिक दस्तावेज बारे विचार-विमर्शको सिलसिलामा उहाँ सामू पुग्दा कुरै कुरामा चावहिल भारतीय मौर्य सम्राट अशोक की छोरी चारूमतिको नाउँबाट नभै किराँती भाषामा चाभे चौंरी भन्ने स्थानमा रहेको विहारबाट बन्न गएको नयाँ तथ्य सार्वजनिक गर्नुभयो । साथै उहाँले उक्त तथ्यमा आधारित सानो पुस्तिका निकालीदिने दाताको खोजिमा आफू रहेको पनि बताउनु भयो । तत्काल मैले आफ्नो मार्गदर्शक गुरूको पुस्तिका प्रकाशन गरिदिने बचन दिएँ । मलाई के विश्वास थियो भने मैले हाल लेखेको र स्यस्यः समाजको नाउँबाट प्रकाशन भएको नेवाः (नेपालभाषा) र नेवार (नेपाली) पुस्तकको विक्रीबाट पैसा आउने छ र त्यहि पुस्तक कोषबाट गुरूको पुस्तिका प्रकाशन ~~गरी~~ दिनेछु । तर मलाई के थाह यहाँ प्रतिभाको कदर होइन की प्रयोग हुँदो रहेछ । त्यसैले त इतिहासविद् भूवनलाल प्रधान जस्ता राष्ट्रिय व्यक्तित्वहरूले पनि सानो भन्दा सानो पुस्तिका प्रकाशन गराउन आग्रहको सहारा लिनु परेको । मलाई त्यस्तै भयो - पहिलो संस्करण नेवाः/नेवार पुस्तकको न पैसा आयो न त पुस्तक नै उल्टै प्रभावशाली व्यक्तित्वबाट हिसाब-किताबको माग गरे.... धम्किको भाषा प्रयोग गरिए तर सबै कहाँ त्यस्ता प्रतिभाको व्यापार गर्नेहरू मात्र हुँदा रहेछन् र ! प्रतिभाको प्रयोग होइन सम्मान गर्नुहुने चावहिल गणेशस्थानका समाजसेवी रामबहादुर श्रेष्ठद्वारा स्यस्यः समाजका केन्द्रिय सदस्य इन्जिनियर विश्वनाथ श्रेष्ठले गर्नु भएको एक वचन आग्रहमा आवश्यक रकम उपलब्ध गराइदिनु भएको सहयोगको फलस्वरूप आज तपाईको हातमा "चाभे-चौंरी = चावहिल" पुस्तिका परेको छ ।

**स्यस्यः प्रकाशन कोष**

**पदम श्रेष्ठ**

**संयोजक**

| | |
|---|---|
| लेखक | :- भूवनलाल प्रधान |
| पुस्तक प्रकाशनार्थ सौजन्य | :- रामबहादुर श्रेष्ठ |
| कभर डिजाइन | :- नरेशकुमार शाक्य |
| कम्प्यूटर कार्य | :- भूविन महर्जन |
| भाषा सम्पादक | :- भोजराज |
| तस्वीर सम्पादन | :- आशाकाजी महर्जन |



| | |
|---|---|
| मुद्रण | :- प्रिन्ट स्काई |
| मूल्य रू | :- २५/- (पच्चिस मात्र) |

प्रकाशन शौजन्य

**रामबहादुर श्रेष्ठ,**

पेशा : व्यापार

जन्म मिति - २००२ आषाढ महिना



समाज सेवामा

स्व. माता पूर्ण मायाँ श्रेष्ठ र स्व. पिता चन्द्रबहादुर श्रेष्ठको नाउँमा प्रत्येक वर्ष सीता विवाह पञ्चमीको दिन २१ हजार नगद चन्दा उपलब्ध गराई चन्द्र विनायक भजन मण्डल मार्फत् एक वृहत् पूजा गराउँदै आइरहनु भएको छ।

समाजसेवी शान्तिपक्षिय व्यक्तित्व रामबहादुर श्रेष्ठद्वारा चावहिल गणेशस्थान निर ढुंगेधारा पुनःनिर्माण र तरकारी बजार व्यवस्थापनमा सहयोग गर्नु भएको स्थानिय बासिन्दाहरु मुक्त कण्ठले प्रशंसा गर्दछन्।

# विषय सूची

# प्राचीन चाबहिलका बिहार चैत्यहरु

आजकाल चाबहिल, देउपाटन, पशुपति-गुहेश्वरी स्थान, वनकाली, गौशाला, जयबागीश्वरी, बत्तीसपुतली आदि नाउँहरुले जति सीमित ठाउँलाई बुझाउने गरेपनि अतीतका विभिन्न युगमा देउपाटन (देवपत्तन, गोल, गुंलं गोरोपट्टन, गोरं) वा चाबहिल शब्दले यी इलाकाहरुलाई जनाउँथ्यो । लिच्छवी युगमा यस इलाकालाई सुवर्णपुरी पनि भनिन्थ्यो । यो इलाका कान्तिपुर शहर बन्नुभन्दा कताकता अगाडि किराँत कालमा नै आबाद भइसकेको देखिन्छ । यसका प्राचीन सांस्कृतिक सम्पदा जमीनमुनि पुरिएका होलान् । चैत्य, विहार, धर्मशाला, मन्दिर, देवस्थल, मूर्ति, शिलालेख आदि केही त आजसम्म पनि जमिनमाथि देखिएकै छन् । अहिलेसम्म भेटिएका (सं. २०४९ सालमा भेटिएको 'सं. १०७ महाराज जयवर्मन' लेखिएको ढुंगे मूर्ति एउटा बाहेक) शिलालेखहरुमध्ये सबभन्दा पुरानो एवं राजा वृष देवकालीन मानिएको शिलालेख पनि यसै इलाकामा पर्दछ । यी स्मारकहरु उपरोक्त प्राचीन सांस्कृतिक वैभवका गौरवशाली अवशेष हुन् ।

ती स्मारकहरु मध्येकै एउटा प्रमुख अङ्ग चाबहिलस्थित ठूलो चैत्य, विहारहरुबारे केही संक्षिप्त चर्चा प्रस्तुत लेखमा गरिने छ । चाबहिल इलाकाको आबादी अति प्राचीन देखिए पनि 'चाबहिल' शब्द नै प्रयोग गरिएको शिलालेख भने पूर्वमल्लकालसम्मका मात्र अहिलेसम्म भेटिएका छन् । यस्तै केही प्राप्त सामग्रीहरुमा यो लेख आधारित छ ।

## नामकरण

पहिले यस 'इलाकाको हाल प्रचलित नाउँ 'चाबहिल' शब्दमा ठाउँलाई बुझाउने अंश 'चा' बारे सोचौं । यस चाबहिललाई यहाँ विवाह गरेर बसेकी

भनिएकी सम्राट अशोककी छोरी राजकुमारी 'चारुमति'को नाउँबाट 'चारुमति बहिल' भनिएको हुनुपर्दछ भन्ने एउटा दलिल छ । त्यस्तै काठमाडौंका राजा प्रताप मल्लको समयदेखि ल्हासामा बेपार गर्न जाने, विशेष गरेर नेवार वा बौद्ध बेपारीहरु यस विहारमा रात बसेर (अर्थात् बास बसेर, नेवार भाषामा 'चा यिना वा चा च्वना') यहीँबाट औपचारिक प्रस्थान गर्ने गरेकाले त्यसैताकादेखि मात्र यसको नाउँ चा-बहिल (अर्थात् चायिगु बहिल) रहेको हो भन्ने अर्को दलिल छ । यी दुवै सोचाइबारे यथार्थ व्याख्या तल यथास्थानमा गरिने छ ।

## चाभे चौरी

अब यस 'चा' बारे अरु विचार गरौं । प्रेमबहादुर लिम्बूका अनुसार दोस्रो किराँत राज्यमा चौंथा राजा थोरे हाङ (=राजा) ले सोमवंशी राजाहरुको राजधानी देउपाटनलाई छाडेर गोकर्णमा नयाँ राजधानी बनाएका थिए । केही समयपछि त्यहाँ बिफरको महामारीले धेरैजना सोतर परे । त्यसैले थोरे हाङले आजकालको चाबहिल इलाकामा बस्ती बसालेर फेरि नयाँ राजधानी बनाए । त्यसको नाउँ 'चाभे चौरी' रह्यो ।

*(प्रेमबहादुर लिम्बू - भूपेन्द्रनाथ - 'नेपालको किराँतिकालिन इतिहास', सं २०११)*

यसरी 'चा' शब्दको व्युत्पत्ति त प्रेमबहादुर लिम्बुको कथनबाट उपरोक्त 'चाभे चौरी' को 'चाभे' देखिन आउँछ । लामो समयको अन्तरालपछि आजकाल जनजिब्रोले कि त पछाडि 'ल' अक्षेर थपेर 'चाभेल' भन्दै अएको कि त पछाडिको अक्षेर 'भे' लाई छाडेर 'चांभे-बहिल' लाई छोट्याई 'चाबहिल' मात्र भन्दै आएको पाइन्छ । यसरी 'चाभे-बहिल' लाई 'चाबहिल' भनिनु स्वाभाविकै हुन्छ । ने.सं. ५७२ सालको एउटा अभिलेखमा यसलाई 'चाविहारी' भनेर लेखिएकै छ ।

# धर्मदेव चैत्य

चाबहिल चोकमा अहिले पनि विद्यमान ठूलो चैत्यको विषयमा गोपालराज वंशावलीमा यसो लेखिएको छ :-

'...राजा श्री धर्मदेव ...तेन राजाविहार धमरेचेत्य भटारिके प्रतिष्ठित' भनेर किटानसाथ लेखिएकोबाट राजा धर्मदेव (सं. ५०० भन्दा अगाडि ताकाका)ले राजाविहारमा 'धमरेचेत्यभटारिके' (धर्मदेव चैत्य भट्टारक) स्थापित गरेका थिए भन्ने थाहा हुन्छ । यहाँ उल्लिखित राजविहार चाहिं राजा धर्मदेवको राज्यकालभन्दा अगाडि नै बनिसकेको तथ्य छर्लङ्ग हुन्छ ।

यस चैत्यको सेरोफेरोमा लिच्छवीकालीन स-साना ढुंगे चैत्यहरु एवं अरु केही भग्नावशेषहरु छन् । साथै, दक्षिण-पश्चिम कुनामा क्वा:पा:द्यो सहितको एउटा देवगृह सबुत रुपमा आज पनि खडै छ ।

## राजविहार, महाराजविहार

उपरोक्त उद्धाहरणबाट धर्मदेव चैत्य अर्थात् चाबहिलस्थित ठूलो चैत्य बनाइनुअगाडि नै त्यस परिसरमा राजविहार थियो भन्ने सिद्ध हुन्छ ।

ने.सं. ५७२ (सं. १५०९)को एउटा तमसुकमा पनि राजविहारको साथै चाविहारी (चा-बहिल)को उल्लेख भएको छ :-

'श्रीमत श्री श्री पशुपति भट्टारकस्थाने श्री नवहर (नवग्रह, गुंल, गोल, देउपाटन) श्री पुर्व्वाघाटमहापञ्चालीस्थानयां .....तत्र व स्थाने श्रीराजविहारी महाबुद्धाद्धिवाशिन् श्रीचाविहारी वता लिबिछेँ गहवास्तव्यं भिषु श्रीमनिकराजजुस...'

*(महेशराज पन्त - 'नेवार राज्य र ब्राम्हण', पूर्णिमा सं. ८५, पृ. ११ र ४६)*

यस उद्धरणमा परेका पशुपतिस्थानमा... त्यसै ठाउँमा श्रीराजविहार

महाबुद्ध (महाबौद्ध चैत्य अर्थात् धर्मदेव चैत्य, चाबहिल चोकस्थित ठूलो चैत्य) मा बस्ने श्री चाविहारी (चाबहिल)को पूर्व (व:ता=पूर्व) लिबिंछेँ बस्ने भिक्षु मनिकराज... भन्ने शब्दहरुबाट चाबिहारी (वर्तमान चाबहिल, थथुबहिल, समाधिमण्डप महाविहार) राजविहार र महाबौद्ध (अर्थात् धर्मदेव चैत्य)को आसपासमा पर्दछ भन्ने अर्थ निस्कन्छ । साथै थथुबहिल नै राजविहार होइन भन्ने पनि सिद्ध हुन्छ ।



यसबारे महेशराजजीले यसोपनि लेखेका छन् :-

'राजविहारको महाबुद्ध भनी त्यस लिखत पत्रमा चाबहिलको (ठूलो धर्मदेव) चैत्यलाई बुझाइएको देखिन्छ र ठूलो चैत्यलाई महाबुद्ध भन्ने परम्परा भएको कुरा आजसम्म पनि बीर-अस्पतालनिरको ठूलो चैत्य महाबौद्ध कहलाएको कुराको पनि यस प्रसङ्गमा सम्झना हुन्छ । राजविहार र महाबुद्ध लेखिसकेपछि मात्र चाविहारीको पूर्वपट्टिको चोकको घरमा बस्ने भनेर लिखतपत्रमा लेखिएकोले चाविहारी (र) लाई राजविहारको लगापातमा गाभेकोमा सन्देह छैन ।'

*(महेशराज पन्त - पूर्णिमा ८५, पृ. ४६)*

ने.सं. ७७५ (सं. १७१२)को एउटा शिलालेखमा यसो लेखिएको छ :-

'...श्री महाराजविहारवाशिनो श्री भिक्षु जयतप्रमुखादि ....दानपति श्री राजविहारावस्थित शाक्यभिक्ष श्रीजयसिं जिनदेव ...थ्वते प्रमुखनं पादुसिवा जुयाव राजविहारस गजुरि छाया । शिजल जुक्वो दिसि सिवा खलकनं गुनजोति विजय देवरथं थति प्रमुखनं दोहोलपा जुरो ॥ ...'

*(महेशराज पन्त :- 'राजविहारको विषयमा', पूर्णिमा ८५, पृ. ४६)*

यस शिलालेखमा 'महाराज विहारवासी भिक्षु जयत प्रमुख, राज विहारवासी दानपति शाक्यभिक्षु जयसिं जिनदेव प्रमुख यिनीहरुले प्रतिपदा (पादु, पारु) सेवा गरी राजविहारमा गजुर चढाए ।' भनेर किटानसाथ लेखिएको छ ।

यस विहारलाई महाराजविहार र राजविहार दुवै भन्ने गरिन्थ्यो भन्ने कुरो मेरी स्लसरले एउटा अप्रकाशित अभिलेखबाट थाहा हुन्छ भनेर 'नेपाल मण्डलमा' लेखेकी छिन् ।

*(ऐ. पूर्णिमा ८५, पृ. ४४)*

## खण्डित शिलालेख

चाबहिल चोकस्थित ठूलो (धर्मदेव) चैत्यको पश्चिमतिर बत्ती बाल्न ठध्याइएका दुईटा ढुंगे थाममध्ये दायाँतिरको थाम ठध्याउन घोप्ट्याइएको एउटा चेप्टो कमलाकार ढुंगा छ । त्यसको घोप्टिएको सतहमा शिलालेखको केही भाग अझै छ । त्यसमा लेखिएका शब्दहरुबाट कुनै एकजना बौद्ध महिलाले स्त्रीत्वबाट मुक्त भई पुरुषत्व पाउने कामना गर्दै केही धार्मिक कृति बनाइदिएको आशय झल्कन्छ । यो शिलालेख (सं. १०७ महाराज जयवर्मन लेखिएको वि.सं. २०४९ सालमा पाइएको मूर्तिको लिखतलाई छाडेर) अहिलेसम्म पाइएका शिलालेखहरुमा सबभन्दा पुरानो र राजा वृषदेवकालीन हुनुपर्ने अनुमान गरिएको

छ । यो खण्डित शिलालेख राजा धर्मदेवका बाजे राजा वृषदेवकै समयको भए यसमा चर्चित अनुत्तर ज्ञान, किन्नर जातक कथा आदि कुराले विहार वा चैत्यसित सम्बद्ध भएको तथा यसको उपस्थिति यसै परिसरमा भएको तथ्यबाट यसले जनाएको कृति पनि राजविहारसित सम्बद्ध रहेको सम्भावना देखिन्छ । अनि यसले राजविहार वा चाबहिलको प्राचीनतातिर त संकेत गर्छ गर्छ साथै यो राजविहार वा महाराजविहारले चर्चेको धलो 'सुगतशासन-पक्षपाती' राजा वृषदेवकै स्मारक हुनसक्ने तथ्यतिर पनि पुष्ट्याइँ दिन्छ ।


चाबहिल विहार

# थथु चाबहिल

यो थथु चाबहिल (समाधिमण्डप महाविहार) नै उहिले चाविहारी कहिन्थ्यो भन्नेबारे माथि चर्चा भइसकेको छ । फेरि, उक्त ने.सं. ५७२ सालको अभिलेखमा 'श्रीराजविहारको अधिवासी चाविहारीको पूर्व लिबिछेँ बस्ने भिक्षु श्री मनिकराज...' भनेर लेखिएकोबाट यो चाविहारी महाराजविहार वा राजविहारको आसपासमा अवस्थित छ भन्ने कुरो स्पष्ट हुन्छ । अब हामीहरु थथु चाबहिलको प्रसङ्गतिर नै लागौं ।

## नाम

यस थथुचाबहिललाई 'समाधिमण्डप महाविहार' भनिन्छ ।

*(रत्नकाजी - विजयरत्न - 'नेपाः देःया विहारया ताःचा', २०३९)*



यस विहारलाई भ्रमवश अरुनाउँ पनि राख्ने जमर्को गरिन्छ । त्यसबारे चर्चा तल गरिएको छ ।

## विवरण

यो बहिल भाग्यवश आजसम्म साङ्गोपाङ्ग रुपमा विद्यमान छ । यो बहिल चाबहिल चोक पुग्ने मूल सडकको पश्चिमी छेउमा रहेको ठूलो चैत्य - धर्म - देव चैत्यको करिब दुई सय पाइला जति पश्चिमतिर खुला ठाउँमा छुट्टै प्राङ्गण र चौघरे भवनहरुसहित अवस्थित छ । प्राचीन बहिलको स्वरुप यथावत् कायम राख्न उपत्यकाका, विशेष गरेर काठमाडौंका आजसम्म सफल केही मात्र बाहाल-बहिलहरु छुस्याबाहाल, मुस्याबाहाल, ठबहिल आदिमा यो थथुबहिल एउटा पनि पर्दछ ।

यस बहिलको सम्पूर्ण भाग बाटाको सतहबाट करिब दुई फिटजति उठाइएको आलीमाथि निर्मित छ । यसमा पस्ने मूलढोका उत्तरी पाटाको भित्तामा बनाइएको छ । ढोकामा पुग्न उक्लने खुडकिलाका दायाँबायाँ ढुङ्गे सिंह राखिएका छन् । ढोकामाथि मूर्तिहरु कुँदिएको काठको तोरण छ । ढोकाबाट भित्र पसेपछि माझमा ढुंगाले छापिराखेको चारकुने आँगन र त्यसको चारैतिर प्राचीन बहिल शैलीका बार्दली निस्केको आँखे झ्याल सहितको दुईतले भवनहरु देवा पर्छन् । आँगन उक्त भवनहरुको फेदमा रहेको पेटीभन्दा अलि मुनि खाल्डामा पर्दछ । बहिल शैलीअनुसार चारैतिर भुई तलामा दलान छन् । हाल ती दलानमा कतैकतै गाह्रो लगाइएको छ र दोस्रो तला पनि त्यतिको खुला छैन ।

बहिलको क्वा:पा:द्यो प्रतिस्थापित गरिएको देवगृह दक्षिणी लंगको बिचमा छ । क्वा:पा:द्यो भुईतले कोठामा उत्तराभिमुख गरेर विराजमान गरिएको काठको वज्रपाणि लोकेश्वर मूर्ति हुन् - दाहिने हात अभय मुद्रामा रहेको र देब्रे हातले वज्र धारण गरेको । यस देवस्थलभित्र पस्ने काठको

बुट्टेदार ढोका भव्य रुपले कुँदिएको छ । ढोकामाथि जडिएको तोरणमा पञ्चबुद्धका मूर्तिहरु कुँदिएका छन् र माभमा केही ठूलो अक्षोभ्य मूर्ति पनि छ । यस ढोकाका दायाँबायाँ पनि स-साना ढुंगे सिंहहरु छन् । क्वा:पा:द्यो परिक्रमा गर्ने बाटो खुला राखिएको छ ।

क्वा:पा:द्यो रहेको कोठामा अरु केही काठ र माटाका मूर्तिहरु पनि छन् । ती मध्ये एउटा सानु मूर्ति पद्यमपाणी लोकेश्वर अर्थात् बुङ्गमतीका मत्स्येन्द्रनाथको हो । जसलाई यस बहिल संघका शाक्यहरुले कुलदेवता भनेर मान्दछन् र बर्सेनि यसैलाई पूजागरी देवाली मनाउँछन् । त्यत्रै एउटा स्त्री-मूर्ति पनि छ जसको एउटा हात सोभ्कै माथि उठाइएको छ । यो मूर्ति यहाँका शाक्यहरुले गंगारानीको हो भन्दछन् (यसबारे चर्चा तल दिइएको छ) । अर्को एउटा पुरुष मूर्तिले भ्कोला बोकिराखेको छ । अरु एक दुईटा मूर्ति पनि छन् जसबारे अहिले केही थाहा पाउन सकिएको छैन ।

यस बहिलमा सम्राट् अशोककी छोरी चारुमतीको मूर्तिपनि छ भन्ने धारणा जति चर्चित भएपनि त्यसको कुनै आधार देखिंदैन । यसबारे अरु विवरण तल 'भ्रमात्मक धारणा' उपशीर्षक अन्तर्गत दिइएको छ ।

क्वा:पा:द्यो कोठामा पस्ने ढोकाको देब्रे तिर नेपाल भाषामा लेखिएको एउटा ने.सं. ७७५ सालको शिलालेख ठड्याइएको छ जुन यस बहिलको देवगृहमा गजुर प्रतिस्थापन गरेको बारेको हो । ढोकाको दाहिनेतिर पेटीमा चारपाँचवटा स-साना लिच्छवी शैलीका ढुंगे चैत्यहरु सँगालिएका छन् । गजुर चाहिं देवगृहको छानामाथि मन्दिर आकारको अर्को सानु छाना उठाई त्यसमाथि राखिएको छ ।

तल आँगनमा चाहिं देवगृह ढोकाको देब्रेतिर काठका लठ्ठाहरुमा एउटा ढलौटे घण्टा भ्कुण्ड्याइएको छ । यसकै बगलमा पाँचसातवटा केही ठूलासाना ढुंगे लिच्छवी चैत्यहरु थुपारिएका छन् । साथै एउटा ढुंगे खम्बाको चारै दिशाका पाटामा एक-एकवटा बोधिसत्वको भविष्य व्याकरण मुद्रामा

उभिरहेको मूर्ति छ । चारै पाटामा यस्ता मूर्ति भएका ढुंगे खम्बाहरु स्वयम्भू, लगनबाहाल, इटुंबहाल, ठबहिलमा पनि देखिन्छन् । आँगनमा मध्यकालीन उद्देश्य चैत्य दुई तीनवटा पनि छन् जसमध्ये एउटा पुरानो देखिन्छ ।

देवगृह भवन प्राचीन देवगृह शैलीमा छ । यसको भुईंतलामा दायाँबायाँ दुईटा स-साना आँखेभ्र्याल छन् । दोस्रो तलामा आगम कक्ष छ । त्यसको बाहिरी मोहडाको बीचमा तीनभ्र्याले पासुखा भ्र्याल र दायाँबायाँ याकः भ्र्याल छन् । आगम कक्षको दाहिने तिरको भाग बहिलकी जीवित कुमारीको निमित्त छुट्टयाइएको छ । उहिले कुमारीलाई यहीं राख्ने व्यवस्था थियो । यता केही वर्षदेखि कुमारीको लागि आवश्यक व्यवस्था गर्न मुश्किल भएको र पूजा गर्न आउने श्रद्धालु भक्तजनहरुको संख्यापनि घटेको कारणले कुमारीलाई आफ्नै घरमा राख्ने गरिएको छ ।

## संघ

यस बहिलको संघ चोखै शाक्यहरुको संघ हो । यिनीहरुको चुडाकर्म अर्थात् बरे छुयेगु यसै बहिलमा हुन्छ । यी शाक्यहरुका अठार घर (वा परिवार) छन् । संघमा पाँचजना थकाली छन् ।

## पूजाआजा

क्वाःपाःद्योको नित्यपूजा बिहान-बेलुका परम्परा अनुसार गरिन्छ । पूजाको पालो एकएक महिनाको हुन्छ र उपरोक्त अठार परिवारमा जेष्ठानुक्रमले जान्छ । बुसादं अर्थात् बहिलको क्वाःपाःद्यो प्रतिष्ठापनको वार्षिक दिवस केही वर्ष यतादेखि मनाउन छाडिएको छ । बुसादं फाल्गुन पूर्णिमाको दिन मनाइन्थ्यो ।

यहाँका शाक्यहरु काठमाडौंका सोह्रैवटा बहिलका संयुक्त कार्यक्रमहरुमा सहभागी बन्छन् ।

# जीवित देवता कुमारी

यस बाहालको एउटा प्रमुख विशेषता यहाँ जीवित देवता कुमारी राख्ने परम्परा हो । यस थथुबहिल कुमारी सम्पूर्ण चाबहिल र देउपाटनको कुमारी हुन् र यिनलाई देउपाटनको कुमारी भन्ने चलन पनि छ ।

यी कुमारीको चयन यहाँका संघ सदस्य शाक्यहरुका कान्छी छोरीहरुबाट विधिवत् रुपले गरिन्छ तर यसरी नयाँ छानिने कुमारी बहालवाली कुमारीभन्दा कान्छी हुनुपर्छ । यसको विधिगत प्रक्रिया पुऱ्याउने काम मखंबहालका बज्राचार्य प्रमुख पुरोहितबाट हुन्छ । हाल कुमारीलाई आवश्यक अवसरहरुमा मात्र देवगृह अर्थात् बहिलमा ल्याइन्छ ।

यसरी कुमारीलाई देवगृहमा अनिवार्य रुपले ल्याउने अवसरहरु सामान्यतः निम्नलिखित हुन् :- दुईटा दिसी पूजा (जेष्ठ शुक्ल दशमी र पौष कृष्ण दशमी), अक्षय तृतीया (वैशाख शुक्ल) र पञ्चदानको दिन (भाद्र कृष्ण त्रयोदसी) । दुईटै दिसी पूजामा यहाँका पाँचजना थकाली र मखंबाहाले बज्राचार्यहरुले आगम देउताको पूजा गर्नाको साथै कुमारीको पनि पूजा गर्छन् । पञ्चदान (पञ्जरां)को दिन संघका शाक्यहरुको साथै कुमारीलाई पनि पञ्जरां अर्पण गरिन्छ ।

यस बहिलको कुमारीको सम्बन्धमा एउटा महत्वपूर्ण कुरो के छ भने काठमाडौंकी लायेकू (सरकारी) कुमारीको संयोगवश निधन भएमा यहींकी कुमारी हनुमान ढोकास्थित कुमारी घरमा राख्न लैजाने परम्परा छ । राजा भास्कर मल्ल (ने.सं. ८२१-४४, सं. १७५८-८१) को राज्यकाल ने.सं. ८३६ (सं. १७७२-३) सालमा तत्कालीन लाय्कू कुमारीको निधन हुँदा यसै बहिलकी कुमारी हनुमान ढोकाको कुमारी घरमा स्थापना गर्न लगिएकी थिइन् । यसबाट पनि देउपाटन-चाबहिल भेकको साथै यस बहिलको ऐतिहासिक महत्व राम्ररी झल्कन्छ ।

## कुलदेवता

यस संघको कुलदेवता आजकाल क्वा:पा:द्यो कक्षमै राखिएको पद्मपाणी लोकेश्वर मूर्ति हो जसको चर्चा माथि भइसकेको छ । यस सम्बन्धमा एउटा हल्ला के फैलिएको छ भने यस थथुबहिले शाक्यहरुको कुल देवता चाबहिल ठूलो चैत्यको दक्षिणतिर हाल पनि ठिङ्ग उभिरहेको उत्तराभिमुखी पद्मपाणि लोकेश्वर हो । तर यस्तो धारणा एकदम गलत हो र त्यस लोकेश्वरको ढुंगे मूर्तिसित चाबहिलको कुनै सम्बन्ध छैन भन्ने कुरामा चाबहिले शाक्यहरु विशेष जोड दिन्छन् ।

## आयस्रोत

यस बहिलको प्रमुख आयस्रोतको रुपमा रहेका जग्गाहरु सबै केही वर्ष अगाडि बेचिए र त्यसबाट आएको बीस-बाईस लाख जति रुपियाँ हाल गुठीको नाउँमा बैंकमा राखिएको छ । यो रकम बहिलका भवनहरुको जीर्णोद्धारको लागि खर्च गरिने छ । जीर्णोद्धार भने पुरातत्व विभाग र पशुपति क्षेत्र विकास कोषसित समन्वय गरेर मात्र गर्नुपर्ने भएकोले सो काममा ढिलाई भइरहेको छ ।

## भ्रमात्मक धारणाहरू

यस थथुबहिलको सम्बन्धमा फैलिएका केही भ्रमात्मक धारणाहरु निम्न लिखित हुन् :-

(१) यो बहिल गंगा रानीले स्थापना गरेकी थिइन् होला भन्ने :- यस बहिलमा पाइने गंगा रानीको भनिएको मूर्तिको आधारमा होला तिनीबाट नै ने.सं. ८५० सालमा यस बहिलको संस्थापन भएको थियो पनि भनिन्छ । यस्तो सोचाइ गलत छ भन्ने कुरो त यसै बहिलमा गजुर हालेको बारे माथि चर्चा भइसकेको ने.सं. ७७७ सालमा राखिएको तथा यहीं आजसम्म रहेको

शिलापत्रबाट स्वतः सिद्ध हुन्छ । फेरि, ने.सं. ८५० सालताका काठमाडौंका राजा जगज्जय मल्ल (ने.सं. ८४४-८५५) थिए र त्यसताका देउपाटन (सुवर्णपुरी)मा कुनै अलग राजा वा रानी भइरहेको देखिन्न । यस बहिलको संस्थापन ने.सं. ७७५ भन्दा धेरै अगाडि नै भइसकेको सिद्ध हुन्छ ।

ने.सं. ८५० सालताका गंगारानी नाउँ भएकी कुनै शाक्य महिला (जो साँच्चै रानी वा राजाकी भित्रिनी थिइनन्)ले यस बहिलको मरम्मत गरेको सम्म सम्भावना छ र बहिलमा हाल रहेको मूर्ति उक्त गंगारानी शाक्यको हुन सक्छ ।

(२) 'चायिगु' (अर्थात् राति बास बस्ने) बहिलबाट 'चाबहिल' भएको भन्ने :- यस विषयमा मेरी स्लसरले आफ्नो 'नेपाल मण्डल, भाग १' मा यस्तो लेखेकी छिन् :-

'...राज प्रताप मल्लले तिब्बतसित व्यापारिक सम्बन्धमा वृद्धि गरेपछि नेवार व्यापारीहरुको संख्या अत्यधिक बढ्न लाग्यो । त्यसबेला साँखुको बाटोबाट ल्हासा जाने गरिन्थ्यो । तसर्थ उहाँ जाने व्यापारीहरुलाई परिवारले बिदाई गर्ने ठाउँ आजकलको चाबहिलस्थित धर्मदेव चैत्यनिर अवस्थित राज वा (महाराज) विहार थियो । प्रस्थान गर्ने टोली र सम्बन्धित आफन्तहरु अघिल्लो साँझमा आएर यहाँ बास बस्दथे । भोलिपल्ट बिहान त्यस विहारस्थित आगम देउताको पूजाआज़ा गरिन्थ्यो र ल्हासा जानेहरुलाई देउताको प्रसाद र सगुन दिइन्थ्यो । त्यसपछि मात्र औपचारिक बिदाबारी कार्य सम्पन्न हुन्थ्यो र प्रस्थान गरिन्थ्यो । ल्हासाबाट फर्कंदा पनि व्यापारीहरु साँझमा यही विहारमा बास बस्दथे । घरका आफन्तहरु पनि यहीं आएर भेटघाट गर्दथे, बास पनि बस्दथे । भोलिपल्ट बिहान आगन्तुकहरुलाई प्रस्थानको अवसरमा गरे जस्तै आगम देउताको प्रसाद सगुन दिइन्थ्यो । त्यसपछि सबै खुशीयाली मनाई घर फर्कन्थे । यसरी ल्हासा जाँदा-आउँदा प्रस्थान र प्रत्यागमनका लागि औपचारिक तवरले बास बस्ने नेवार भाषमा 'चायिगु'

अर्थात् राति बास बस्ने ठाउँ भएको हुनाले यस विहारको नाउँ नै कालान्तरमा 'चायिगु' बहिलबाट 'चाबहिल' रहेको हुनुपर्दछ । हुँदा हुँदै पछि यस विहारको मात्र होइन यस ठाउँको नाउँ नै चाबहिल भएको हुनु पर्दछ ।'

राजा प्रताप मल्लको राज्यकाल (ने.सं. ७६१-७९४) वि.सं. १६९८-१७३१ ताकादेखि मात्र उपरोक्त विहारको नाउँ 'चाबहिल' रहेको हुनुपर्दछ भन्ने कथन निम्न लिखित तथ्यहरुसित बाझिएको छ :-

क) माथि चर्चित ने.सं. ५७२ सालको अभिलेखमा 'चाविहारी' शब्द परिसकेको छ ।

ख) पेटेकले आफ्नो 'नेपालको इतिहास' मा यसो, लेखेका छन्, चाबहिलका वैद्य श्रीजसराजले ने.सं. ४०१ सालमा पाटनमा 'अमरकोष' हस्तलिखित ग्रन्थ सारेका थिए ।'

ग) 'चाबहिलका एकजना शाक्यभिक्षु श्रीमदनभद्रले ने.सं. ५३८ सालको 'दिव्यौषधीनाममाला' ग्रन्थको एकप्रति सारेका थिए ।'

यसरी ने.सं. ४०१, ५३८, ५७२ साल अगाडि नै चाबहिल (चाविहारी) नाउँको प्रयोग व्यापक रुपले भइसकेको प्रस्ट देखिन आएको छ ।

३) यस बहिलको नाउँ 'चारुमति विहार' पनि हो भन्ने:- डा. डि. राइटले आफ्नो हातमा परेको एउटा वंशावलीको आधारमा आफ्नो 'नेपालको इतिहास'मा '...सम्राट अशोक आफ्नी महारानी तिष्यरक्षिता, छोरी चारुमति र गुरु उपगुप्तका साथ काठमाडौं उपत्यकासम्म आए ...चारुमतिको विवाह यहींका एक राजकुमार देवपालसँग गरिदिए ....चारुमतिले विहार बनाइन् र त्यसैमा प्रव्रजित जीवन बिताइन् ...' इत्यादि कुरा लेखे ।

तर यस्तो कुरो अरु वंशावलीमा वा अन्त कतै लेखिएको भेटिएको छैन । साथै यस सन्दर्भमा लिखित कुराहरु पनि विचार गर्नु आवश्यक हुन्छ ।

सबभन्दा पहिले उपरोक्त वंशावलीमा सम्राट अशोकको काठमाडौं

आगमनबारे लेखिएको कुरो ऐतिहासिक तथ्यअनुरुप छैन भन्ने त सम्राटको साथमा साम्राज्ञी तिष्यरक्षिता र धर्मगुरु उपगुप्त पनि थिए भनेर त्यसैमा लेखिएकोबाट सिद्ध हुन्छ । यदि उपगुप्त भनिएका व्यक्ति इतिहासकार भि. स्मिथले भनेजस्तै मोगलिपुत्र तिष्य नै भए अशोकको यहाँ आगमन भयो भन्ने तर्क झन् फितलो हुन्छ । अशोकको राज्यभिषेक (बुद्धको निर्वाण भएको २१८ वर्षमा) भएको सत्रौं वर्ष (इ.पू. ४८३-३५ = इ.पू. २४८) मा तेस्रो बौद्ध संगायन भएको बेला मोग्गलिपुत्र ७२ वर्षको भइसकेका थिए । अशोकका राज्याभिषेकको बत्तीसौं वर्ष (इ.पू. २६५-३२ = २३३) इ.पू. २३३ सालमा तिष्यरक्षिता महारानी भएको बेला मोग्गलिपुत्र ८६-८७ वर्षका हुन्थे तथा उनी बाँचिरहेकै भएपनि त्यस्तो उमेरमा यहाँ आइपुग्नु त्यत्तिको सम्भव देखिन्न ।

अशोकको धर्मयात्रा उनको राज्यभिषेकको बीसौं वर्ष (इ.पू. ४८३-२१८-२०=२४५) इ.पू. २४५ सालताका शुरु भएको थियो । यदि त्यसै बेला अशोक यहाँ आए भनेर कल्पना गरौं भने तिष्यरक्षिता त्यसबेला बडा महारानी भइसकेकी थिइनन्, फेरि सम्राटको धर्मयात्रामा तिनी साथमा भएको उल्लेख बौद्ध ग्रन्थहरुमा पाइन्न, सबभन्दा नमिल्दो देखिएको कुरो त के भने तिष्यरक्षिता बुद्ध धर्मप्रति पूर्णतः श्रद्धालु थिइनन् । तिनको बारे श्रीलंकाको महावंशमा यस्तो लेखिएको पाइन्छ ।

'धम्माशोक राजा के (शासन के) अठारवें वर्षमें महामेधवनारम्भ में महाबोधि प्रतिष्ठित हुई ॥ १ ॥ उसको (वाद) बारहवें वर्ष में राजाकी प्यारी रानी बुद्धभक्त असन्धि मित्राकी मृत्यु हो गई । उसके चौथे वर्षमें राजा धम्माशोक ने दुराशय तिष्यरक्षिताको अपनी रानी बनाया ॥ २-३ ॥ इसके (वाद) तीसरे वर्षमें उस अनर्थकारिणी रुपगर्विता ने यह (देख) कि राजा महाबोधिको उससे भी (अधिक) प्यार करता है, क्रोधित होकर जाकर मण्डूकण्टकसें महाबोधिको नष्ट करदिया ॥ ४-५ ॥ इससे चौथे वर्षमें

महाराज धम्माशोकने स्वर्गवास किया । यह (कुल) सैंतीस वर्ष हुए ॥ ६ ॥'

*(भदन्त आनन्दकौशल्यायनबाट गरिएको 'महावंश' को हिन्दी अनुवाद)*

उपरोक्त उद्धरणबाट अशोकको राज्यभिषेक (इ.पू. ४८३-२१८ = २६५) को बत्तीसौं वर्ष (२६५-३२ = २३३ इ.पू.) ताका मात्र बडामहारानी भएकी थिइन् र त्यसको छ वर्ष पछि नै अशोकको मृत्यु भयो । त्यस अवधिभित्र सम्राट महारानी, धर्मगुरु, लावालस्कर लिएर कतै तीर्थ यात्रा गर्न गएको उल्लेख इतिहासमा वा बौद्ध ग्रन्थहरुमा पाइन्न । गयास्थित जुन बोधिवृक्षको रुखमुनि सिद्धार्थले बुद्धत्व प्राप्त गरेका थिए त्यसै रुखलाई मार्नेसम्म दुर्मति महारानी तिष्यरक्षितामा भएको बुझिएको छ ।

तिनको विषयमा दिव्यावदानमा पनि यसो लेखिएको छ :- 'अशोककी धर्मपत्नी तिष्यरक्षिताले अशोकका छोरा कुणाललाई अन्धो बनाएर निकालेकी थिइन् । बौद्ध धर्मप्रति तिनको ठूलो द्वेष थियो ।'

यसरी अशोकको काठमाडौं आगमन वा महारानी तिष्यरक्षिताबारे राइटको वंशावलीमा दिइएको विवरण महावंश, धर्मदूत, दिव्यावदान जस्ता सर्वमान्य बौद्ध ग्रन्थहरुमा किटानसाथ लेखिएका तथ्यहरुको एकदम विपरीत पर्दछ । यस्ता आधिकारिक बौद्ध ग्रन्थहरुमा स्पष्ट लेखिएका कुराको उपेक्षा गरेर आधार खुलस्त नभएको किंवदन्तीलाई मान्यता दिनु किमार्थ मिल्दैन ।

*द्रष्टव्य :- यस विषयमा अरु बढी व्याख्या ने.रा.प्र. प्रतिष्ठानद्वारा प्रकाशित 'नेपालमा बौद्धधर्म', २०४५ शीर्षक मैले नै लेखेको किताबमा गरिएको छ ।*

थथुबहिलको चर्चा यहीं टुङ्गयाएर अब हामीहरु यसैको दक्षिणतिर अवस्थित क्वथुबहिलतिर लागौं ।

# क्वथुचाबहिल

## अवस्थिति

यो क्वथुबहिल सिफलस्थित शहीद धर्मभक्तको समाधिस्थलबाट चाबहिल जाने बाटाको देब्रेपट्टि अवस्थित छ । यो बहिल पश्चिमतिर रुद्रमती (=धोबीखोला), दक्षिणतिर सिफल, पूर्वतिर लामपोखरी र चाबहिल चोक जाने सडक एवं उत्तरतिर चाबहिल स्तूप र थथुबहिलले घेरिएको छ ।

## नामकरण

स्थानीय लोकबोलीमा क्वथुबहिल भनिने यस बहिलको नामकरण 'गगनगञ्ज महाविहार' भनेर गरिएको छ (रत्नकाजी - विजयरत्न) । तर यस बहिल संघका थकाली शाक्यको भनाइअनुसार यो बहिल स्थापित भएको बेला यसको रेखदेख गर्ने आफ्ना पुर्खा गगनकनिष्क शाक्यभिक्षुको नाउँबाट



विहारको नाउँ 'गगनगञ्ज महाविहार राखिएको हुनुपर्छ । यहाँका स्थानीय बासिन्दाहरुले यस बहिलको नाउँ 'क्वथ'लाई बिगारेर 'कुटु' बहिल भन्ने पनि गरेका छन् । गगनगञ्ज लोकेश्वरकै नाउँबाट यस बहिलको नाउँ गगनगञ्ज महाविहार रहेको हुनसक्छ । गगनगञ्ज लोकेश्वरको मूर्ति उहिले आगलागी भएको वा चोरिएका मूर्तिहरुमा परेको थियो होला । पद्मपाणि लोकेश्वरको मूर्ति त अझ पनि क्वा:पा:द्यो कक्षमा अवस्थित छ ।

## देवगृह

यस बहिलको क्वा:पा:द्यो - अक्षोभ्य बुद्धमूर्ति दुइतले देवगृहको भूई तलामा विराजमान गराइएको छ । यस कक्षभित्र पञ्चबुद्धका मूर्तिहरु र पद्मपाणि लोकेश्वरको एउटा मूर्ति पनि छन् । यहाँ प्रतिष्ठापित महाङ्काल र अरु एकएक फुट अग्ला कैयन मूर्तिहरु केही वर्षअगाडि पटक पटक गरेर चोरिए । सबभन्दा पछिल्लो पटक चोरी भएको मात्र छ-सात वर्ष भयो । त्यस बेला उपरोक्त लोकेश्वर पनि लैजाने चोरहरुको दुष्प्रयास सफल भएन । शयौं वर्ष अगाडि यस देवगृहमा भएको आगलागीमा पनि सम्भवतः केही मूर्तिहरु नष्ट भए हुनन् ।

क्वा:पा:द्यो कक्ष पस्ने ढोका पुग्न चारपाँच खुडकिलाको सिंढी उक्लनु पर्दछ । सिंढीका दायाँबायाँ ढुङ्गे सिंहहरु राखिएका छन् । हाल माथिल्लो खुडकिला गरिएको ढुङ्गामा अक्सर तोरणमा पाइने मकराकार कुँदिएकोछ । सम्भवतः यो प्राचीन भग्नावशेष थियो होला जुन पछि जीर्णोद्धार गरेको बेला यहाँ ओछ्याइयो । क्वा:पा:द्योको ढोकाको चौकोसमा पनि देउताका मूर्तिहरु कुँदिएका छन् । ती चौकोसे थामको माझमा दायाँबायाँ सारिपुत्र र मौद्गल्यायनका मूर्तिहरु कुँदिएका छन्, फेदमा पनि भिक्षु मूर्ति छन् । ढोकामाथि भने तोरण छैन, तर कोपुमा बुद्ध, धर्म, संघका प्रतिक - अक्षोभ्य बुद्ध, प्रज्ञापारमिता, लोकेश्वरका तीनवटा मूर्ति कुँदिएका छन् ।

ढोकाको दायाँबायाँ एकएकवटा स-साना यांक:झ्याल छन् । ढोकाको क्वपुको पनि माथि रङ्गले लेखिएका देवमूर्तिहरु छन् ।

क्वा:पा:द्यो कक्षको माथिल्लो तला दिगि कोठाको बाहिरी भित्तामा तीनवटा झ्याल जोरिएको पासुखा झ्याल छ । हाल यो दिगि कोठा खाली नै छ र यहाँ रहेको आगम देउता देवगृहको सामुन्ने रहेको भवनमा सारिएको छ । यो तला हाल जस्ताले छाइएको छ र त्यसमाथि गजुरसहितको झिंगटीले छाइएको सानु पागोडा छाना उठाइएको छ । हाल यो देवगृह ठिङ्गै एकले खडारहेको नागो जस्तै देखिन्छ । प्राङ्गणलाई घेर्ने होचा परखाल यसको दायाँबायाँ फेदमा जोरिएका छन् ।

पूर्वीलङमा उपरोक्त आगमकोठा रहेको भवन, पश्चिमी लङमा क्वा:पा:द्यो रहेको देवगृह, उत्तरी र दक्षिणी लङमा होचा परखालले घेरिएर हाल साङ्घुरिएको यस बहिलको प्राङ्गणमा पुग्न हालको आगम गृहको मुनिबाट पस्नु पर्दछ । बहिलकै बाँकी पुरानु अङ्ग यस भवनको मटान हाल आगम कक्ष गरिएको छ र यहीं अजिमाको मूर्ति पनि राखिएको छ ।

प्राङ्गणमा तीनवटा चैत्य छन्- दुईटा लिच्छविकालीन र एउटा सम्भवत: मल्लकालीन । प्राङ्गणमा क्वा:पा:द्योको मण्डल बाहेक अर्को एउटा ढुंगे मण्डल र चूडा कर्म गरिने एउटा ढुंगे मण्डल पनि छन् । क्षेत्रपाल चाहिं पश्चिम-दक्षिणी कुनामा छ । यस बाहालको कल: वायेगु (औपचारिक भोज सकेपछि जुठो फाल्ने) ठाउँ चाहिं अलिकति पर पूर्व-उत्तरस्थित सिफल - लामपोखरी सडकपारि पर्दछ । छ्वास: (औपचारिक फोहर फाल्ने ठाउँ) पनि त्यहीं छ ।

यस बहिलका शाक्यहरुका श्राद्धका पिण्डहरु विसर्जन गर्ने ठाउँ एवं कुलदेवता स्थापित गरिएको स्थल केही पूर्वोत्तर तर उक्त सडकवारि नै अवस्थित छन् ।

यस्तो स्थितिबाट के सङ्केत मिल्छ भने उहिले यस बहिलको क्याम्पा र

इलाका निक्कै ठूलो थियो होला । आगलागी वा अरु कुनै कारणले यो बहिल भत्कँदा - बिग्रँदा यसको इलाका धमाधम निजीकरण गरिएको देखिन्छ ।

कुल देवता उपरोक्त स्थानमा टहरो जस्तो मन्दिरको भुईंमा प्रतिष्ठापित गरिएकोछ - तीनवटा ठड्याइएका ढुंगाका पाता, तीनवटै तोरण सहित । यसको दायाँतिर एउटा बुद्धमूर्ति, अरु एक-दुईटा मूर्ति एवं बायाँतिर महाङ्काल, नारायण, नागका मूर्ति छन् । यस कक्षका पूर्वी र पश्चिमी भित्तामा एकएकवटा शिलापत्र पनि राखिएका छन् ।

यस कुलदेवता मन्दिरको ढोका सामुन्ने बाटाछेउमा एउटा स्याल मूर्ति पनि स्थापना गरिएको छ । यसलाई धोंजुजु (जम्बुराज) भन्ने गरिन्छ । यो स्याल देवता यसै बहिलसित सम्बद्ध मानिएपनि यसको औपचारिक पूजा चाबहिलको (थथुबहिलको) वार्षिक जात्रा हुने दिन कार्तिक पूर्णिमा दिन पनि गरिन्छ । त्यस बेला यस मूर्तिलाई भातैभातले छोपेर होम, पूजाआजा विधिवत् गरिन्छ । यो स्याल देउता र कुलदेवता कक्षका देउताहरुलाई पूजा गरी देवाली मनाउन आउने परिवारहरु पनि छन् ।

कुल देवता मन्दिरकै सामुन्ने बाटोपारि एउटा चैत्य मौजुद छ । यसको पश्चिमी फेदमा ठड्याइएको शिलापत्रबाट यसको निर्माण ने.सं. ७५२ सालमा भएको थाहा हुन्छ । यस शिलापत्रको बायाँ चैत्यको फेदमा ओछ्याइएका ढुंगाहरुमा नै बहिलका शाक्यहरुको श्राद्धका पिण्डहरु विसर्जन गरिन्छन् ।

## संघ

यस बहिलको संघ दुई परिवारका सन्तान सात घरका शाक्यहरुबाट बनेको छ । हाल चूडाकर्म गरिसकेका शाक्यहरु पन्ध्रजना छन् । प्रत्येक परिवारले छ-छ महिनाको आलोपालोले बहिलको दैनिक पूजा चलाउँछ । पाःलाःहरु हाल बहिलमा बस्दैनन् । यिनीहरुको चूडाकर्म विधि यसै बहिलमा सम्पन्न गरिन्छ । संघको वार्षिक दिवस बैशाख शुक्ल पञ्चमीको दिन

मनाइन्थ्यो । हाल यो दिवस मनाउने कार्य रोकिएको छ । यस संघमा अरु बहिलमा जस्तै पाँचजना थकालीको व्यवस्था छ । यिनीहरु काठमाडौं शहरका सोह्रवटा बहिलका संयुक्त कार्यकलापहरुमा सहभागी बन्छन् । यस बहिलका वर्तमान थकालीहरुका बाजे भाजुवीर शाक्य यी सोह्रवटा बहिलका मुख्य थायपा (थकाली) पनि भएका थिए ।

## आयस्ता

श्रद्धालु व्यक्तिहरुबाट यदाकदा चढाइने नगदजिन्सी बाहेक यस बहिलको जग्गा जमिनबाट हुने आम्दानी नगण्य भैसकेको छ ।

## इतिहास

यस बहिलको निर्माण र नामकरणबारे अभिलेख, शिलापत्र आदि कुनै भेटिएको छैन । यसबारे चर्चा पनि अझसम्म कतै फेला परेको छैन । यहाँका शाक्यहरुको भनाइ र विशेष गरेर ज्ञानमाला भजन खलः, स्वयम्भूले सं. २०५१ साल माघ २८ गते यस बहिलमा पूजासहित भजन कार्यक्रम सञ्चालन गरेको अवसरमा यस बहिल संघका नोक् शाक्यले प्रस्तुत गरेका बहिलको परिचयमा 'यस बहिलको स्थापना भएको झण्डै चार सय वर्ष भइसकेको भएतापनि ...यस बहिलको दुःखद् घटना आगलागिबाट पहिले नै नष्ट भएकोले क्वाःपाःद्योको देवगृह र आगम घर दुईटा बाहेक अरु खण्डको पुनर्निर्माण गर्न सकेका छैनौं ।' भन्ने भनाईबाट 'स्थापना' भन्ने अर्थ प्रारम्भिक संस्थापन नभई केवल जीर्णोद्धार – त्यो पनि आंशिक जीर्णोद्धार मात्र हुन सक्ने तथ्य झल्किन्छ । आगलागीबाट नष्टभ्रष्ट भई जीर्णोद्धार हुन नसकेको अवधिमा यसको विशाल क्षेत्रमाथि अनेक तरहले अतिक्रमण भएको भान हुन्छ । देवगृहसँगै र आसपासमा आज खडा रहेका निजी घरहरुबाट यस तथ्यतिर संकेत मिल्दछ ।

# मयेजु बाहाल

यस चाबहिल इलाकामा अतीतमा मयेजु बाहाल कहिने बाहालहरु पनि अस्तित्वमा थिए । यी बाहालहरुको निर्माण महिलाहरुले गरेको हुनाले नै मयेजु बाहाल भन्ने गरिएको तथ्य त प्रस्टै बुझिन्छ । ...यस मयेजु बाहालको सिलसिलामा अधिकांश भाषा वंशावलीहरुमा (उदाहरणार्थ, केशरपुस्तकालय वंशावली)मा 'उहिले उहिले मारवाड देशका राजा सुदत्तकी रानी पिङ्गला यहाँ आई श्रीगुहेश्वरी देवीबाट वरदान पाएपछि मयेजु बाहाल र चारवटा ढुङ्गे धारा समेत बनाई त्यसै विहारमा बसेकी थिइन् । पछि विघ्न नाश गर्ने श्वेत (चाबहिल गणेश जसलाई आजकाल रक्तगणेश वा चन्द्रगणेश पनि भन्ने परम्परा छ) विनायकको पनि संस्थापन गरिन् ।' भनेर पनि लेखिएको छ ।

यी मयेजुबाहालहरुको अवशेष वा नाम-निसान आजकाल नदेखिए पनि यिनीहरु कुनै समयमा अवस्थित रहेको ठाउँ आजसम्म पनि निश्चित रुपले कायम छ । चाबहिल चैत्यनिरको मूल सडकदेखि पूर्वको एउटा ठूलो क्षेत्र नै 'मयेजुबाहाल टोल वा इलाका भनिन्छ । मयेजु बाहाल नाउँले जनाइने यस इलाकामा आजकाल मयेजु बाहालै भने कतै छैनन् । यिनका बचेखुचेको भनिएको अवशेष चाबहिल चोक मूल सडकको दक्षिण-पूर्वी पखेरुमा सँगालिएको छ । केही अग्लो गोलाकार पेटीमाथि मण्डप जस्ता दुईटा ढुंगा प्रतिस्थापित गरिएका छन् । तिनको बीचमा एउटा डल्लो ढुंगा पनि राखिएको छ । गोल पेटीको पश्चिमी छेउमा उठाइएको सानु होचो गाह्रामा धेरै हात भएको देउताको एउटा सानु मूर्ति पनि स्थापना गरिएको छ । उक्त पेटीको सतह डन्डीले घेरिएको छ । यसको निर्माण सं. २०४० साल ताका तत्कालीन काठमाडौं नगर पञ्चायत स्थानीय वडाबाट भएको थियो ।

यसरी मयेजु बाहालका अवशेषहरु जमिनमुनि पुरिए वा नष्टभ्रष्ट भएपनि यिनको नाम आजसम्म बाँचेकै छ । यस इलाकालाई आजसम्म मयेजु बाहाल

भनिएकै छ, एक दुइटा भएपनि ढुंगे अवशेष प्राप्त नै छन् । हाल थथुबहिलमा रहेको एउटा बुद्ध मूर्ति मयेजुबाहालबाट ल्याइएको हो भन्ने सम्बन्धित शाक्यहरुको भनाइ छ । फेरि मयेजुबाहालको साथै चारवटा ढुंगे धारापनि बनाइएका थिए भन्ने किंवदन्ती अनुसारका चारवटा ढुंगे धारामध्ये दुईटाको अवस्थिति आजपनि स्पष्टै देखिन्छ । दक्षिणी - पश्चिमी कुनाको एउटा धारा आजपनि साबुद रुपमा चालू नै छ । यसको सामूहिक जीर्णोद्धार का.न.पा. (तत्कालीन पञ्चायत) ले सं. २०४१ सालताका गरेको हो । यहाँ पाइएका सानु चैत्याकार ढुंगे चैत्याकार, धारामुनि राखिने पोटे देउताको मूर्ति, ढुंगे धाराका अरु अवशेष इत्यादि पुनर्स्थापित गरिएको स्थिति आज पनि प्रत्यक्ष देखिन्छ । पूर्व-उत्तरी कुनाको धाराका कुनै कृति नभेटिए पनि खाल्टाका गाह्रा लाउने छाँटिएका ढुंगाहरु भेटिएका छन् र तिनबाटै गाह्रो लगाई खाल्टो कायम गरी मरम्मत गरिएको थियो । यस खाल्टाको उत्तरी गाह्राका जोर्नीका प्वालहरुबाट पानी निरन्तर तर्किरहन्छ । त्यस्तै मयेजुबाहाल इलाकाको पूर्व-दक्षिणी कुनातिर पनि प्राचीन ढुंगेधारा रहेको स्थिति अझै देखा पर्छ ।

## अरू दुईबाहालको चर्चा

भाषा वंशावलीहरुमा नुवाकोटे बैस ठकुरीहरुले काठमाडौं उपत्यकामा राज्य गर्दाको अवधि (भास्करदेव अर्थात् ने.सं. १५९ ताकादेखि अटूट रुपले ने.सं. १९८ र पछि ने.सं. २३९ - २४८ ताका पनि) मा दुइजना रानीले देउपाटन (चाबहिल) इलाकामा दूईटा बाहाल बनाएको चर्चा यस प्रकार दिइएको भेटिन्छ :-

'...नेपालमा धेरै बाहाल यिनै बैस ठकुरी राजाहरुले बनाएका हुन् । देवपाटनमा पनि वैश्य ('बैस' हुनुपर्ने) राजाकी दुई रानी इन्द्रमती र भद्रमतीले दुई बाहाल बनाई ललितपुर च्यासल टोलमा एक बाहाल बनाई... धेरै गुठी राखिदिया । ...'

*(केशरपुस्तकालय वंशावली)*

उपरोक्त ललितपुर च्यासलटोलको बाहाल आजसम्म साबुदै भएपनि चाबहिल वा देउपाटनमा बनाइएको चाहिं अत्तोपत्तो पाइएको देखिन्न ।

# सुवर्णापुरी र पशुपति देवस्थल

वर्तमान चाबहिल देउपाटन इलाकालाई उहिले सुवर्णापुरी, सुवर्णापुर भनिन्थ्यो भनेर भाषावंशावलीहरु (उदाहरणार्थ राजभोगमाला वंशावली, केशर पुस्तकालय वंशावली, एउटा राजवंशावली, प्राचीन नेपाल ४ आदि) मा लेखिएको छ भने डा. डि. राइटले आफ्नो हातमा परेको वंशावलीको आधारमा आफूले लेखेको 'नेपालको इतिहास, इ. १८७७' मा यसो लेखेका छन् :-

'...किराँत वंशको पतनपछि सोमवंश सत्तामा आयो । (यस वंशका) पाचौं राजा भास्कर वर्माको राज्यकालमा पहिलेदेखि त्रैलोक्य वशङ्करी लोकेश्वर भनिने बौद्ध देवताको रुपमा पुजिन्थे र यिनका पुजारीहरु बौद्ध नै थिए । यी राजा (भास्कर वर्मा)ले देवपत्तन शहरको परिवर्धन गरेर यसलाई सुवर्णपुरी भन्ने नयाँ नाम राखे । त्यसको फलस्वरुप चारुमती (भनिने थथुचाबहिल वा समाधिमण्डप महाविहार) को नाउँ पनि 'सुवर्णप्रणाली महाविहार रह्यो । यसको कारण के थियो भने यसका छानाहरुमा सुनौला जलप लगाइएको थियो । राजा भास्कर वर्माले सुवर्णपुरी नगर पशुपति देवताप्रति समर्पित गरे तथा त्यहाँको धार्मिक कार्य सञ्चालन त्यहींका (चारुमती भनिने समाधिमण्डप हाविहारका) बौद्ध पुरोहितहरुलाई सुम्पे । यसका पूजाआजा, पर्वसमारोहहरु र तत्सम्बन्धी औपचारिक विधि विधानहरु तामा



पत्रमा कुँदाएर चारुमती विहारका बौद्ध भिक्षु (पुरोहित) हरुको जिम्मा लगाइदिए ।'

*(डा. डि. राइट - 'हिष्ट्रि आफ् नपाल', इ. १८७७, क्याम्ब्रिज युनिभर्सिटी प्रेस, पृ. ११३)*

उपरोक्त उद्धरणमा उल्लिखित पशुपतिनाथ पहिले त्रैलोक्यवशङ्करी लोकेश्वरको मूर्ति संस्थापित गरिएको ठाउँमा नै संस्थापित गरिए भन्ने कुराको सम्बन्धमा के कुरा थाहा पाउनु आवश्यक छ भने गोपालराज वंशावलीमा यी भास्कर वर्मा भन्दा लगत्तै अगाडिका राजा पशुप्रेक्षले पशुपतिनाथको मन्दिर बनाई श्रृंखला (अर्थात् छाना) लगाए भनेर लेखिएको छ । सम्भवतः त्यसै बेला त्रैलोक्य वशङ्करीको मूर्ति त्यहाँबाट हटाइयो वा त्यसलाई त्यहीं जमिनमुनि गाडेर त्यहीं ठाउँमा पशुपतिनाथको मूर्ति संस्थापन गरियो ।

यहाँनिर के कुराको सम्भावना देखिन्छ भने त्यसै घटनाको स्मरण भविष्यमा पनि गर्न गराउन वर्षमा एक पल्ट मुखाष्टमीको दिन उक्त लोकेश्वरको तामाको मुखाकृति भएको मुकुट पशुपतिनाथलाई पहिराई पूजा गर्ने चलन चलाए । आजसम्म पनि कार्तिक शुक्ल अष्टमीको दिन पशुपतिनाथलाई बुद्ध (सम्भवतः त्रैलोक्यवशङ्कर लोकेश्वर) को मुखाकृति कुँदिएको मुकुट पहिराई पूजा गर्ने परम्परा जुन कायम छ । त्यो उपरोक्त घटनाकै द्योतक हुनु बिलकुल सम्भव छ ।

उपरोक्त कथनबाट के कुरा देखिन्छ भने उहिले थुथुबहिल (समाधिमण्डप महाविहार) का भिक्षु (शाक्य) हरुको जिम्मामा रहेको पशुपतिनाथका पुजारी पदमा पछि नियुक्त भएका ब्राम्हणहरुको पकड देवस्थलको साथै क्रमश परिसर इलाकामा पनि बढ्दै आयो र बौद्धहरुको प्रभाव घट्दै गयो । कालान्तरमा थथुबहिलका शाक्यहरु पशुपति देवस्थलबाट पूर्णतः बहिष्कृत नै भए ।

अर्को एउटा स्रोतबाट पनि यस तथ्यलाई पुष्टि मिल्दछ । आजकाल काठमाडौं वटु टोलस्थित मूबाहाल (मूलश्री महाविहार) का बज्राचार्यहरुले

आफूहरुलाई प्राचीन पिंबाहाल (उहिले पशुपति देवस्थलको सेरोफेरोमा कतै अवस्थित सर्वसिद्धि महाविहार) का बज्राचार्यहरुका सन्तान मान्दछन् तथा पूजाआदिका अवसरमा आध वाक्य पढ्दा आफूहरुलाई 'पिंबाहाल मूलक वज्राचार्य....' भन्ने आध वाक्य प्रयोग गर्दछन् । यसबारे रत्नकाजी - विजयरत्न वज्राचार्यले आफ्नो 'नेपाःदेया विहारया ताःचा, सं. २०३९' शीर्षक नेपालभाषको पुस्तकमा यसो लेखेका छन् :- 'यस (मूबाहाल, मूलश्री) विहारका बज्राचार्यहरु 'सर्वसिद्धि विहार' पिंबाहालका हुन् । यो विहार (उहिले) पशुपति - बत्तीसपुतलीको आसपासमा अवस्थित भइरहेको विहार हो । ...यहाँका (बज्राचार्य)हरुको आद्या वाक्यमा पनि पुरानु विहारको नाउँ उल्लेख गरी आद्य वाक्य - 'वटुटोल मूलश्री महाविहारमा (अ)वस्थित पिंबहाचार्य' (पिंबाहाले बज्राचार्य) भन्ने चलन आजसम्म कायम भैआएको छ ।

यसै प्रसंगमा बि.एस्. रत्नले निम्नलिखित किंबदन्ती प्रस्तुत गरेका छन्:-

"...विहारका बूढापाकाहरुको कथनानुसार उहिले पशुपतिथानको परिसरमा अवस्थित त्यस पिंबाहालमा नियमित रुपले बज्रयानी परम्परानुसार रहस्यपूजाको साधना क्रम गरिंदै थियो । यसरी रहस्य पूजाको सिलसिला रत्नमय नील साँढे (बुसाहा) को प्रभावको कारणले त्यस पूजामा कुनै कमी नभई निरन्तर सञ्चालन हुँदै आइरहेको थियो । ...विनाशकालमा विपरीत बुद्धि भन्ने आव्हान अनुसार धुमांगारी पूजाको अवशेष (अर्थात् कलःवायेगुः) फेक्ने कुरामा आपसमा देखासिकी भएको कारणले बज्राचार्यहरुमा कलह उब्जियो ....यसरी झगडा भइरहेको बेलामा धेरै दिनदेखि त्यहीं रहने र बज्राचार्यहरुसित हिमचिम भएका एकजना ब्राह्मणले 'यस्तो काम आ-आफैले गर्नुपर्छ भन्ने छैन, म पनि बज्रयानी बौद्ध धर्मका अनुयायी भएकोले यो (पूजाअवशेष फाल्ने, कलः वायेगु) काम मैले नै गर्छु, भनेकाले उसैलाई काम गर्न दिइयो, झगडा पनि सामसुम भयो । त्यस ब्राह्मणले क्रमशः

उपरोक्त पूजाको रहस्य पनि पत्ता लगायो । त्यहाँका आर्चाय (बज्राचार्य) हरुको गतिविधिहरुको पूरा अध्ययन र पूजाविधि सम्पूर्णाको यथार्थ जानकारी लिएपछि त्यसैबाट फाइदा उठाई त्यस ब्राह्मणले यावत् रहस्यका मूलआधार भइरहेको नीलो बराहा सुटुक्क लग्यो । नील बराहा त्यहाँबाट गायब हुने बित्तिकै पूजाविधिहरु भङ्ग हुनथाले । नियमित रुपमा चदिरहेको पूजाविधि बढी आएको सबै त्यही ब्राह्मणको कुत्सित चाल हो भन्ने रहस्य छर्लङ्गै थाहा भयो । फलस्वरुप ती आचार्यहरुको शक्ति क्षीण भयो, वाक्शक्तिको ह्रास भयो, शास्त्रार्थमा पनि पराजय भयो । त्यस विहारमा टिक्नसक्ने स्थिति रहेन । उनीहरुले आफूहरुले झगडा गरेबाट आफैंनाश भयो भन्ने तथ्य बोध गरे । ...पशचाताप गर्दै उनीहरु सबैले गुह्येश्वरी नैरात्मादेवी समक्ष पूजाप्रार्थना गरे ...नैरात्मादेवीबाट यसो आज्ञा भयोः– 'अब उप्रान्त तिमीहरु पूर्णवती नगरमा कोलिग्राम ठूलो रुख भएको ठाउँमा विहार बनाएर बासोबास गरे । त्यहीं प्रज्ञापारमिता स्वरुप सद्यकुमारीको स्थापना गरी यस्तै रहस्यात्मक पूजाआजा गर, तिमीहरुको भलो हुनेछ, कल्याण हुनेछ ।'

देवीको वचनलाई शिरोधार्य गरी ती बज्राचार्यहरु त्यहीं वर्तमान वटुमा बराइँ सरेर मूल विहारको संस्थापना गरे ।

*'आनन्दभूमि' २०५१ बाट उद्धत 'अष्टमंगल स्मृति ग्रन्थ, २०५९' पृ. २०६ का सम्पादकबाट साभार*

यसरी राजा भास्कर वर्माको राज्यकाल (लिच्छवी राजा जयदेवको समय शक सं १०७, इ. १८६ सालभन्दा केही पुस्ता अगाडि) ताका आजकालको पशुपति देवस्थलमा कतै त्रैलोक्यवशंकरी लोकेश्वरको मूर्ती, यसकै सेरोफेरोमा पिंबाहाल र त्यससित सम्बद्ध बज्राचार्यहरु अस्तित्वमा थिए भन्ने देखिन्छ । थथुबहिल र त्यससित सम्बद्ध शाक्यहरु त आजसम्म चाबहिल इलाकामा बसोबास अटूट रुपले गर्दै आएका छन् ।

# उपसंहार

अन्तमा यो देउपाटन पशुपति चाबहिल इलाको सम्बन्धमा के कुरा स्मरणीय हुन्छ भने यो ठाउँ इतिहास र पुरातत्वको दृष्टिले अति नै महत्वपूर्ण छ । यो इलाका माथि चर्चा गरिएअनुसार प्रागऐतिहासिक कालमै गुल्जार भइसकेको थियो । वंशावलीहरु अनुसार सोमवंशी राजाहरुको राजधानी नै देउपाटन पशुपति क्षेत्र थियो । सोमवंशी राजा भास्कर वर्माको राज्यकालमा यहाँ पशुपति बाहेक लोकेश्वर, थथुबहिल आदि देवस्थलहरु स्थापित भइसकेका थिए । किराँतहरु आफूहरुले सर्वप्रथम बसालेको राजधानी छाडेर गोदावरीमा जानु परेको थियो । केही कालपछि उनीहरु त्यहाँबाट आएर पहिले वाणेश्वरमा र पछि देउपाटनमा राजधानी बनाए । किराँती राजा थोरे हाङले बिफरको प्रकोपको कारणले देउपाटन छाडेर चाभेचौरी (आजकालको चाबहिल) बसालेर त्यहीँ राजधानी बनाए । चाबहिल, देउपाटन र पशुपति देवस्थलमा कैयन लिच्छवीकालीन अभिलेखहरु भेटिएका छन्, कति त यहाँ जमिनमुनि पुरिएका होलान् । हालै समयसमयमा भएका उत्खननहरुबाट थरीथरीका पूरातातिक वस्तुहरु प्राप्त भएको हांडीगाउँ विशालनगर क्षेत्र पनि यस इलाकाबाट केवल एउटा खोलाले मात्र छुट्टिएको छ । इतयादि मौजुदा ज्वलन्त वस्तुगत तथ्यहरु पनि यस इलाकाको सम्बन्धमा विचारणीय हुन्छन् ।

पुनश्चः यसै चाबहिलस्थिति धन्दो चैत्य (अर्थात् धर्मदेव चैत्य) मा हालै भएको जीर्णोद्धारबाट प्राप्त वस्तुहरुबारे निम्नलिखित समाचार प्राप्त भएको छः-

'काठमाण्डौको चाबहिलस्थित धन्दो चैत्य हर्मिकाको उत्तरपूर्वी भाग जीर्णोद्धार गर्ने क्रममा त्रयोदश भुवनको गाह्रोबाट निकालिएका इंटाहरुमा लोप हुन लागेको ब्राह्मी लिपिसहित थुप्रै अन्य पुरातात्विक महत्वका वस्तुहरु फेला परेका छन् ।

...पुरातत्व विभागका अधिकृत प्रकाश दर्नालका अनुसार उक्त इंटामा ब्राह्मी लिपिमा 'चा रु व ती भनी' लैखिएको छ भने नेवारी भुजिंमोल लिपिमा क्रमशः 'चा रु व ती धन्दे' तथा 'हे तु प्र. भा' भन्ने अक्षरहरु कुंदिएको छ ।

*(नेपाल समाचार पत्र, २०५९।१०।२७ बाट साभार)*



## भुवनलाल प्रधानका कृतिहरू

१. बाल ज्ञान सफू (नेपालभाषा)
२. A Parctical Supplement to English Grammer & Composition In Nepali.
३. क) शहीद शुक्र, ख) गंगालाल दशरथ, ग) धर्मभक्त माथेमा, घ) शहीद परिचय
४. Lumbini, Kapilwastu-Dewadaha.
५. क) स्वयम्भू ख) Swayambhu
६. क) बुद्ध धर्म र शाक्यहरू
ख) Shakyas of Nepal
७. नेपालमा बौद्ध धर्म
८. नेपालको जनक्रान्ति - २००७
९. वज्रवाराही मन्दिर एक परिचय
१०. नेपाली इतिहास र संस्कृतिका केही पक्ष
११. क) जापानी धर्म, ख) जापानको इतिहास, ग) आजको जापानी समाज
१२. बच्चाको विकास विधि
१३. क) ड्रागनको देश, ख) भुटानको अरूणोदय
१४. पुण्डरीक पद्धति
१६. क) बुद्धवंश, ख) शाक्यमुनि बुद्धका स्मारक
१७. नेपाल संवत्‌को यथार्थता

## भुवनलाल प्रधान संलग्न संस्थाहरूको सूची

१. R.C.T. का एक संस्थापक खेलाडी
२. नेपाल-चीन सांस्कृतिक संघ
३. नेपाल-सोभियत/रूस सांस्कृतिक संघ
४. पुराना राजनैतिक कार्यकर्ता सम्पर्क समिति
५. बालकुमारी आ.मा.वि. सञ्चालक समिति
६. नेपाल उपभोक्ता संघ
७. जेष्ठ नागरिक समाज सेवा तदर्थ समिति
८. ज्ञानमाला भजन खलः
९. अनुवाद समिति, च्वसापासा
१०. महेन्द्रआदर्श आ.मा.वि. सञ्चालक समिति
११. शान्तिनिकुञ्ज मा.वि. सञ्चालक समिति
१२. शहीद शुक्र मा.वि. सञ्चालक समिति
१३. नेपाल-चीन मैत्री संघ (संस्थापक सदस्य)
१४. वासुदेव भट्टराई पुरस्कार चयन समिति सदस्य
१५. नेपाल इतिहास संघका एक सदस्य
१६. केदार स्मृति सम्मान-पत्रले सन्मानित